# सार्वजनिक सुरक्षा नियम, २०१२

नेपाल सार्वजनिक सुरक्षा ऐन २००७ को दफा १३ ले दिएको अधिकार प्रयोग गरी सरकारले देहाय बमोजिमका नियमहरू बनाएको छ ।

१. <u>संक्षिप्त नाम र प्रारम्भ</u> :

(१) यी नियमहरूलाईः- "सार्वजनिक सुरक्षा नियम, २०१२" भनिनेछ ।

(२) यी नियमहरू तुरून्त लागू हुनेछन् ।

२. व्याख्याः- यी नियमहरूमा बडाहाकिम भन्नाले चारभंज्यांगभित्रका कमिश्नर र मेजिष्ट्रेटलाई समेत लिएको भन्ने संझिइनेछ ।

३. गिरफ्तार गर्ने आदेशः-

(१) बडाहाकिमले नेपाल सार्वजनिक सुरक्षा ऐन २००७ सालको दफा २ बमोजिम कुनै व्यक्तिलाई उक्त दफाको उपदफा (१) बमोजिम गिरफ्तार गर्ने निर्णय गरेमा त्यस व्यक्तिलाई तल लेखिएको ढाँचा बमोजिमको आदेश दिन वा दिन लगाउनुपर्छ ।

०१२ मिति ----- को सूचना बमोजिम नेपाल सार्वजनिक सुरक्षा ऐन २०१२ को दफा २।१ (क) ले मलाई दिएको अधिकार प्रयोग गरी --- लाई उक्त दफाको उक्त उपदफा बमोजिम गिरफ्तार गरी नजरबन्द राख्न भनी म यो आदेश गर्दछु ।

मिति                                                    बडाहाकिम

(२) उपरोक्त आदेशको १ प्रति जेलका हाकिमलाई दिइनेछ ।

४. बडाहाकिमको अधिकारः-

(१) नेपाल सार्वजनिक सुरक्षा ऐन २००७ को दफा २ को उपदफा (१) (क) बमोजिम थुनामा रहेका व्यक्तिलाई छाडे पनि हुन्छ भन्ने वडाहाकिमको चित्तमा लागेमा बडाहाकिमले आदेशव्दारा छोड्न सक्तछ ।

(२) थुनामा राखेको थुनाबाट छोडेको सबै कलममा कारण खोली ३ दिनभित्र गृहमन्त्रालयको सेक्रेटरी छेउ रिपोर्ट गर्नुपर्छ ।

५. नजरबन्दीलाई थुनुवा पुर्जी दिनेः-

नेपाल सार्वजनिक सुरक्षा ऐन, २००७ को दफा २।१(क) बमोजिम कुनै व्यक्ति गिरफ्तार हुनासाथ बडाहाकिमले निजलाई नजरबन्द राख्नु पर्ने कारणहरू वा निजलाई लगाईएको अभियोगहरूको एक छोटकरी विवरण खोली थुनिएको वा नजरबन्द राखिएको मितिदेखि १ हप्ताभित्र थुनुवा पुर्जी दिनुपर्नेछ । नजरबन्द या थुनामा रहेका व्यक्तिले सो थुनुवापुर्जीमा नजरबन्द राखिएको कारण वा लगाईएको आरोपका सम्बन्धमा आफ्नो भएको व्यहोरा राखी नजरबन्द भएको मितिले १५ दिनभित्र निवेदन पेश गर्नुपर्छ ।

निवेदन थुनुवा पेश गर्न थुनुवालाई थुनुवा भएको ठाउँको १ जवान सरकारी अफिसरको रोहवरमा निजको मानिस वा वारिससँग सरसल्लाह गर्न सहुलियत दिइनेछ ।

६. थुनुवा पुर्जी दिंदा शंका लागेमा सरकार साध्नेः-

कुनै मामिलामा लगाइएका अभियोगहरू प्रकाश हुनाले कानूनव्दारा स्थापित सरकारको सुरक्षामा धक्का पुग्ने जस्तो बडाहाकिमको चित्तमा लागेमा माथि नं. ५ बमोजिम थुनुवा पुर्जी नदिई सार्वजनिक सुरक्षा ऐनको दफा ५ उपदफा (ख) को सम्बन्धमा आदेशको निमित्त गिरफ्तार गरेको १५ दिनभित्र सरकारमा उक्त मामिला पेश गर्न पर्छ ।

७. बडाहाकिमले जाहेर गर्ने :-

नजरबन्द राखिएको व्यक्तिले आफ्नो निवेदन पेश गर्नासाथ र जुनसुकै हालतमा गिरफ्तार गरिएको मितिले २२ दिनभित्र बडाहाकिमले गृहबिभागको सेक्रेटरी कहाँ उपरोक्त व्यक्तिलाई थुनी राख्न पर्ने नपर्ने बारेको रिपोट देहायका कागजातहरू सहित सामेल राखी पठाउनुपर्दछ ।

(क) नजरबन्दीलाई दिइएको थुनुवापुर्जीको नक्कल,

(ख) निजको निवेदन र

(ग) अभियोग सम्बन्धमा बडाहाकिमसंग भएको अरू प्रमाणहरू

८. सल्लाहकार समितिको गठन :-

न्यायाधीशमध्ये १ र अर्को प्रभावशाली कर्मचारी १ गरी जम्मा २ जनाको सल्लाहकार समितिका दुवै सदस्यहरुलाई गृह-सेक्रेटरीले सूचना दिई त्यस्ता सबै रिपोर्टहरू ३ दिन भित्र पेश गर्नुपर्छ ।

९. गृह-सेक्रेटरीले गर्ने काम :-

सल्लाहकार समितिवाट रिपोर्टहरू प्राप्त भएपछि गृहविभागका सेक्रेटरीले आफ्ना रायसहित ती रिपोर्टहरू ७ दिनभित्र सरकारमा पेश गर्नुपर्छ ।

१०. बडाहाकिमले लापरवाही गरे खबर दिने :-

कुनै मामिलामा बडाहाकिमले यी नियमहरूमा लेखिएबमोजिम नगरेमा वा गर्न लापरवाही गरेमा जुनसुकै व्यक्तिले गृहविभागका सेक्रेटरी छेउ उक्त बेहोराको खबर दिन सक्नेछ र उक्त सेक्रेटरीले पनि अविलम्ब उपरोक्त नियमहरु पालना गर्न लगाउनेछ ।

११. दफा २।१। (ख) (ग) को आदेश गर्ने :-

(१) बडाहाकिमले नेपाल सार्वजनिक सुरक्षा ऐन २००७ को दफा २ बमोजिम कुनै व्यक्तिलाई उपदफा (१) (ख) बमोजिम आदेश गर्ने निर्णय गरेमा त्यस व्यक्तिलाई तल लेखिएका ढाँचा बमोजिमको आदेश दिन वा दिन लगाउनुपर्छ ।

२०१२ साल मिति ---------- को सूचनाबमोजिम नेपाल सार्वजनिक सुरक्षा ऐन २००७ को दफा २।१ (ख) ले मलाई दिएको अधिकार प्रयोग गरी ----- लाई उक्त दफाको उक्त उपदफाबमोजिमको यो आदेश तामेल भएको २४ घण्टा भित्र --- छोडी जानु भनी म यो आदेश गर्छु । निजलाई अर्को आदेश नभएसम्म --- इलाकाभित्र आउन मनाही गरिएको छ।

मिति बडाहाकिम

(२) बडाहाकिमले नेपाल सार्वजनिक सुरक्षा ऐन २००७ को दफा २ बमोजिम कुनै व्यक्तिलाई उपदफा ।१।।ग। बमोजिम आदेश गएई निर्णय गरेमा त्यस व्यक्तिलाई तल लेखिएको ढाँचा बमोजिमको आदेश दिन वा दिन लगाउनु पर्छ । २०१२ मिति --- को सूचना बमोजिम नेपाल सार्वजनिक सुरक्षा ऐन, २०१२ को दफा २।१।।(ग)। ले मलाई दिएको अधिकार प्रयोग गरी --- लाई उक्त दफाको उक्त उपदफाबमोजिम --- मा बस्नु या निज सो इलाकामा नभई अन्यत्र भए तुरून्त सो इलाका या ठाउँमा गई बस्नु भनी म यो आदेश गर्दछु । निजले अर्को आदेश नभएसम्म तोकिएको इलाका या ठाँउ छोडी जान मनाही गरिएको छ ।

मिति बडाहाकिम

(३) बडाहाकिमले यस्ता आदेश तामेल गराउनुपर्छ ।

१२.आदेश खारेज गर्ने :-

आफूले निकालेको आदेश जारी राख्न दरकार छैन भन्ने बडाहाकिमको चित्तमा लागेमा निजले उक्त दफा २ को उपदफा । १।।ख। र ।ग। अन्तर्गत निकालिएको आदेश खारेज गर्न सक्तछ ।

१३.रिपोर्ट गर्ने :-

उक्त दफा २ को उपदफा (१) (ख)र (ग) बमोजिम आदेश निकाल्न परेको अवस्था कारण खुलाई सो निकालेको ७ दिन भित्र बडाहाकिमले गृहबिभागमा रिपोर्ट पठाउनुपर्छ ।

१४. विन्तिपत्र दिनेः— बडाहाकिमले निकालेको आदेशबाट पीर मर्का पर्ने व्यक्तिले बेहोरा खोली गृहविभागमा जाहेर गर्न सक्नेछ र गृहबिभागको सेक्रेटरीले बुझी दरकार सम्झेमा बडाहाकिमलाई निजलाई निकालेको आदेश खारेज गर्न लगाउन सक्नेछ ।



---

साभारः अधिवक्ता सुधानाथ पन्त, नेपालको कानूनी व्यवस्था र प्रजातन्त्रको विकासको दर्पण, जुरिष्ट एण्ड कम्पनी (प्रा.) लि, बागबजार, काठमाण्डौ, प्रथम संस्करण, २०६३